# कुवेतमा कार्यरत नेपालीहरूको मार्गदर्शक एवम् सहयोगी पुस्तिका

# श्रमिकको साथी

## नेपाली राजदूतावास
## कुवेत

# कुवेतको श्रम तथा अध्यागमन कानून:
# नेपाली श्रमिकहरूले थाहा पाउनुपर्ने कुराहरू

## कुवेतमा रहँदा नेपाली नागरिकहरुले
## गर्नुपर्ने कार्यहरु (Dos) तथा
## गर्न नहुने कार्यहरु (Don'ts)

## नेपाली राजदूतावास, कुवेतले नेपाली
## नागरिकहरूलाई प्रदान गर्ने सेवाहरू
## एवम्
## अन्य महत्वपूर्ण कुराहरू

प्रकाशक: नेपाली राजदूतावास, कुवेत
संस्करण: प्रथम
मितिः  २०७४ असार
मुद्रक: प्लाटिनम प्रिन्ट्रिङ प्रेस
मुर्गाव, कुवेत
प्रति: २६००

# दुई शब्द



कुवेतमा रोजगारीमा रहेका नेपाली नागरिकहरूको संख्या हाल करीब ६१ हजार रहेको छ। यहाँ कार्यरत नेपाली नागरिकहरूलाई कुवेतको श्रम तथा अध्यागमन कानूनका महत्वपूर्ण पक्षहरू, यहाँ रहँदा गर्नुपर्ने तथा गर्न नहुने कार्यहरू, राजदूतावासले प्रदान गर्ने सेवा एवम् त्यसलाई प्राप्त गर्ने प्रक्रिया र अन्य सान्दर्भिक जानकारी उपलब्ध गराई उहाँहरूको रोजगारी एवम् कुवेत बसाईलाई सहज, समस्यारहित एवम् सार्थक बनाउन मद्दत पुर्याउने उद्देश्यले यो पुस्तिकाको प्रकाशन गरिएको हो। कतिपय आवश्यक कुराहरू यसमा समावेश हुन छुटेका हुनसक्छन्। यस सम्बन्धमा प्राप्त हुने उपयोगी सुझावहरूलाई समेटी थप सूचना एवम् जानकारी सहित यसका आगामी संस्करणहरूलाई परिमार्जन गर्दै लगिनेछ। कुवेतलाई कर्मथलो बनाउनु भएका नेपाली नागरिकहरूका लागि यो पुस्तिका एउटा भरपर्दो सहयोगी, मार्गदर्शक एवम् सहजकर्ता बन्न सक्नेछ भन्ने विश्वास लिएको छु।

**यज्ञबहादुर हमाल**
**राजदूत**

# राजदूतावासका पदाधिकारीहरू

## राजदूत

**महामहिम राजदूत श्री यज्ञबहादुर हमाल**

## कूटनीतिक कर्मचारीहरू

**काउन्सेलर श्री बिन्दिरा शंकर जोशी**

**व्दितीय सचिव श्री भोगेन्द्र लिङदेन**

**व्दितीय सचिव श्री ज्ञान बहादुर मगर**

**तृतीय सचिव श्री सुरेश अधिकारी**

**सहचारी श्री मनोज कुमार सिंह**

# विषय सूची

# कुवेतको श्रम कानून

## कुवेतको श्रम कानूनका मूलभूत पक्षहरू

कुवेतको श्रम कानून The Law of Labour in the Private Sector (No. 6 of 2010) २१ फेब्रुअरी २०१० मा जारी भएको हो। उक्त श्रम कानून कार्यान्वयनसँग सम्बन्धित मन्त्रालय The Ministry of Social Affairs and Labour हो भने विभाग The Public Authority for Manpower हो। साथै श्रम मन्त्रीबाट समय समयमा जारी हुने आदेशहरू पनि कानूनसरह लागू हुन्छन्।

कुवेतको श्रम कानूनले आप्रवासीको रोजगारीको अधिकार सुनिश्चित गरेको छ। यो कानूनको धारा १० मा रोजगारदाताले कामदार ल्याई रोजगारविहीन राख्न नहुने र सो गरेमा कामदारलाई स्वेदश फिर्तीको हवाइ टिकट उपलब्ध गराउनुपर्ने व्यवस्था गरिएको छ।

## महिलाको रोजगारी सम्बन्धी व्यवस्था (धारा २२–२६)

- अस्पताल, क्लिनिक, निजी उपचार होम र मन्त्रालयले तोकेको स्थानबाहेक अन्य स्थानहरूमा राती १० बजेदेखि बिहान ७ बजेअघि (रमादान महिना बाहेक) काममा नलगाइने। यातायात र उपयुक्त सुरक्षा दिनुपर्ने (धारा २२)
- खतरनाक, कठिन, स्वास्थ्यको दृष्टिले हानिकारक, महिलाको शोषण हुने, पुरुषलाई मात्र सेवा दिने स्थानमा काममा लगाउन नहुने (धारा २३)
- महिला आमालाई कार्यालय समयभित्र बच्चालाई दुध खुवाउनका लागि २ घण्टाको ब्रेक दिनुपर्ने, ५० जना महिला कामदार वा २०० जना कामदार भएको कार्यस्थानमा ४ वर्षमुनिका बच्चाहरूको लागि नर्सरी राखिनुपर्ने (धारा २५)
- समान कामका लागि पुरुष र महिलालाई समान तलब प्रदान गर्नुपर्ने (धारा २६)

सम्झौताको अवधि पश्चात पनि औपचारिक नविकरण विना दुवै पक्षहरूले सो सम्झौता कार्यान्वयन गरेमा सम्झौता पुन सोही अवधिको लागि सोही सर्तहरू बमोजिम नविकरण भएको मानिने (दुवै पक्षले अन्य शर्तसहित सम्झौता नविकरण गर्न सहमत भएको अवस्थामा बाहेक)

### कार्य सम्झौता (Work Contract/Agreement) सम्बन्धी व्यवस्था (धारा २७–३१)

- कार्य अवधि, तलब, कामको प्रकृति, सम्झौतामा हस्ताक्षर गरिएको र लागू हुने मिति उल्लेख गरी लिखित रुपमा ३ प्रति तयार गरिनुपर्ने (कामदार, कम्पनी र मन्त्रालयको लागि एक एक प्रति)
- लिखित सम्झौता नभए पनि कामदारले आफ्नो अधिकार अन्य प्रमाणबाट स्थापित गर्न सक्ने
- कार्य सम्झौता भन्दा फरक काम, कामदारको योग्यता र अनुभव नभएको काम लगाउन नहुने
- सम्झौतामा उल्लेख भएको कार्य प्रकृति र कामदारको अनुभव तथा योग्यता विपरितका काम नलगाइने
- सम्झौता अरबिक भाषामा हुने र अन्य भाषामा अनुवाद गर्न सकिने, विवाद आएमा अरबिक भाषालाई मान्यता दिइने
- सम्झौता अवधि तोकिएकोमा ५ वर्ष भन्दा बढी र १ वर्ष भन्दा कम हुन नहुने
- रोजगारदाता र कामदार दुवैको सहमतिमा सम्झौता नवीकरण गर्न सकिने

### कामदारको कर्तब्य/सजाय (धारा ३२–४०)

- बढीमा १०० दिनको परिक्षणकाल रहने, एउटै रोजगारदाताको लागि एक पटक भन्दा बढी परीक्षणकालमा नरहने
- दुवै पक्षले विना सूचना सम्झौता भंग गर्न सक्ने
- रोजगारदाताले कामदारलाई रोजगारीबाट हटाएमा सेवा सुविधा उपलब्ध गराउनुपर्ने

- सरकारी आयोजना वा दुर्गम स्थानको लागि रोजगारदाताले उचित वासस्थान, निशुल्क यातायातको व्यवस्था मिलाउनु पर्ने, वासस्थान नदिएमा सोको लागि भत्ता दिनुपर्ने
- गलत कार्य गर्दा दिइने सजायबारे कामदारले देख्ने गरी कार्यस्थलमा राखिनुपर्ने, एउटा गर्न नहुने कार्य गरे वापत एक मात्र सजाय तथा कार्यस्थलको नियम उल्लंघन गरी गलत कार्य गरेको १५ दिनपछि प्रमाणित भएमा पनि सोको लागि रोजगारदाताले सजाय गर्न नपाउने

## पूर्व सूचना र क्षतिपूर्ति विना कार्य सम्झौताको अन्त्य हुने र सेवा सुविधा नपाउने अवस्थाहरू (धारा ४१)

- रोजगारदातालाई ठूलो क्षति हुने गरी कुनै गल्ती गरेमा
- कामदारले जालझेल गरी रोजगारी पाएको भएमा
- रोजगारदातालाई ठूलो क्षति पुर्याई वा पुग्न सक्ने गरी संगठनको गोपनियता भंग गरेमा

## रोजगारदाताले कामदारलाई कामबाट (पाउनुपर्ने सेवा सुविधासहित) हटाउन सक्ने अवस्थाहरू (धारा ४१)

- सम्मान, नैतिकता, प्रतिष्ठा प्रतिकूल हुने गरी कुनै अपराध गरेमा
- नैतिकता विपरित कुनै कार्य कार्यस्थलमा गरेमा
- रोजगारदाता वा सहकर्मीहरू उपर साङघातिक हमला गरेमा
- सम्झौता अनुरुपको जिम्मेवारी वहन नगरेमा तथा पटक पटक रोजगारदाताको निर्देशन पालना नगरेमा

माथिका अवस्थामा कामबाट हटाईएको कामदारले सम्बन्धित श्रम विभागमा सो निर्णय विरुद्द उजुरी गर्न सक्ने, निर्दोष भए कामदारले क्षतिपुर्ति पाउने लगातार ७ दिन वा वर्षमा छुट्टाछुटै गरी २० दिनसम्म कुनै विश्वासिलो कारण तथा

आधार विना काममा नआएमा कामदारले राजिनामा दिए सरह रोजगारदाताले मान्न सक्ने (धारा ४२)

रोजगारदाताले लगाएको आरोपको कारण जेलमा परेमा वा अदालतको शुरुको निर्णय कार्यान्यवन गर्न प्रहरी हिरासतमा कामदारलाई राखिएमा निजलाई कामबाट अलग भएको मानिने, दोषी प्रमाणित नभएसम्म रोजगारदाताले कार्य सम्झौता भंग गर्न नमिल्ने

## सम्झौताको अवधि किटान नभएको अवस्थामा दुबै पक्षले पूर्व सूचना दिई सम्झौता भंग गर्न सक्ने (धारा ४४)

- महिनावारी तलबमा काम गर्ने कामदारको हकमा सम्झौता सकिनुभन्दा ३ महिना अघि
- अन्य कामदारको हकमा सम्झौता सकिनुभन्दा १ महिना अघि
- सूचना नदिई सम्झौता भंग गर्ने पक्षले अर्को पक्षलाई सो अवधि बराबर हुन आउने महिनावारी तलबको अनुपातमा क्षतिपूर्ति दिनुपर्ने
- रोजगारदाताले कामदारलाई कामबाट हटाउने सूचना दिएमा हप्ताको १ दिन वा ८ घण्टा काम खोज्न कामदार जान पाउने तर १ दिन अगावै सूचना दिनुपर्ने, यस्तो समयको तलब पाउने
- सूचना अवधिमा रोजगारदाताले कामदारलाई कामबाट हटाउन सक्ने तर उक्त अवधि कामदारको सेवा अवधिमा जोडी तलब सुविधा दिनुपर्ने
- कानून बमोजिम पाउने बिदा लिएको आधारमा कामदारलाई रोजगारबाट बर्खास्त गर्न नपाउने

## विना सूचना सम्झौता भंग गरेमा कामदारले सेवा सुविधा पाउन सक्ने अवस्थाहरू (धारा ४८)

- रोजगारदाताले सम्झौता वा कुवेती श्रम कानून उल्लंघन गरेमा
- रोजगारदाता वा निजको प्रतिनिधिबाट सांघातिक हमला भएमा

- स्वास्थ्य मन्त्रालयको निर्णयअनुसार काम गरिरहँदा स्वास्थ्यमा प्रतिकूल असर पर्ने भएमा
- रोजगारदाता वा निजको प्रतिनिधिले सम्झौतामा हस्ताक्षर गर्दा कामको शर्त सम्बन्धमा जालझेल गरेमा
- रोजगारदाताले कामदारलाई सजाययोग्य अपराध गरेको आरोप लगाएको तर अदालतबाट सफाई पाएमा
- कामदारको सार्वजनिक मर्यादामा हानी पुग्ने गरी रोजगारदाताले कुनै कार्य गरेमा
- कामदारको मृत्यु भएमा वा कामदार काम गर्न असमर्थ भएको प्रमाणित भएमा वा आधिकारिक मेडिकल निकायबाट प्रमाणित रिपोर्टअनुसार सबै विरामी बिदाको उपयोग गरिसक्दा पनि काममा फर्कन सक्ने गरि स्वस्थ्य हुने स्थिति नदेखिएमा

## रोजगार सम्झौता भंग भएको मानिने अवस्थाहरू (धारा ५०)

- रोजगारदाता टाटपल्टेको घोषणा भएमा
- सधैका लागि कम्पनी बन्द भएमा
- कम्पनीको बिक्री भएमा, अर्कोसँग गाभिएमा वा कम्पनी अन्य कानूनी हकदारहरूमा हस्तान्तरण भएमा (यस्तो अवस्थामा कामदारले पहिलो रोजगारदातासँग गरेको सम्झौताअनुरुप नै नयाँ रोजगारदातासँग काम गर्ने अधिकार हुने)

## कामदारले सेवा अवधि (सम्झौता) समाप्तिपछि पाउने आर्थिक सुविधा (End of Service Benefits) (धारा ५१)

- घण्टा, दिन, हप्ता वा कामको संख्याका आधारमा तलब पाउने कामदारले पहिलो ५ वर्ष अवधिको प्रत्येक वर्षको लागि १० दिन बराबरको तलब र ५ वर्षपछि प्रत्येक वर्षको लागि १५ दिनको तलब

- महिनावारी तलब पाउने कामदारले पहिलो ५ वर्षको अवधिको प्रत्येक वर्षको लागि १५ दिन बराबरको तलब र ५ वर्षपछि प्रत्येक वर्षको लागि १ महिनाको तलब
- End of Service Benefits बापत् कामदारले पाउने रकमबाट सामाजिक सुरक्षा बापत् कुनै रकम कटाउन नपाउने

## तलबी औपचारिक बिदाहरू (धारा ६८)

- Hegeira New Year (१ दिन)
- Isra' and Mi'raj Day (१ दिन)
- Eid Al Fitr (३ दिन)
- Waqfat Arafat (१ दिन)
- Eid Al-Adha (३ दिन)
- Prophet's Birthday (१ दिन)
- National Day (१ दिन)
- Gregorian New Year (१ दिन) गरी (जम्मा १२ दिन)

*उल्लिखित बिदाहरूमा काम गर्नुपरेमा कामदारले सो दिनको दोब्बर तलब र अर्को १ दिन अतिरिक्त बिदा पाउने।*

## बिरामी बिदा (रोजगारदाताले तोकेको डाक्टर वा सरकारी अस्पतालको डाक्टरको मेडिकल रिपोर्टको आधारमा) (धारा ६९)

- १५ दिन (१०० % तलब पाउने)
- १० दिन (७५ % तलब पाउने)
- १० दिन (५० % तलब पाउने)
- १० दिन (२५ % तलब पाउने)
- ३० दिन (वेतलबी)

## वार्षिक तलबी बिदा (धारा ७०–७९)

- वार्षिक ३० दिनको तलबी बिदा
  (पहिलो वर्ष काम गरेको ९ महिना पछि मात्र बार्षिक बिदाको लागि योग्य हुने। विदा अवधिभित्र पर्ने सार्वजनिक बिदाका दिनहरू यो विदा अवधिमा नजोडिने)
- विरामी बिदा गणना नहुने
- वार्षिक तलबी बिदा लिनु अघि कामदारलाई सो बिदाको तलब दिनुपर्ने
- बिदाको मिति रोजगारदाताले तय गर्ने
- कामदारले २ वर्ष बिदा अवधि पुगेसम्म बिदा बचत गर्न सक्ने र रोजगारदाताको सहमतिमा संचित २ वर्षको बिदा एकै पटक लिन सक्ने
- सम्झौताको समाप्तिपछि संचित बिदाको रकम पाउने
- बिदामा दोस्रो रोजगारदातासँग काम गरेमा पहिलो रोजगारदाताले बिदाको तलब फिर्ता लिन सक्ने

## किरिया बिदा

- परिवारका सदस्यहरूको मृत्यु भएमा ३ दिन तलबी बिदा
- मुस्लिम महिला कामदारको श्रीमानको मृत्यु भएमा ४ महिना १० दिन बिदा (मृत्यु भएको दिनबाट)
- बिदा लिएको समयमा अर्को रोजगारदाताकहाँ काम गर्न नहुने
- गैरमुस्लिम महिला कामदारको श्रीमानको मृत्यु भएमा २१ दिनको तलबी बिदा

## तलबी शैक्षिक बिदा

- कामसँग सम्बन्धित क्षेत्रमा बढीमा ५ वर्षसम्म रोजगारदाताले कामदारलाई बिदा दिन सक्ने
- शैक्षिक बिदाको अवधि बराबर कामदारले रोजगारदाताको काम गर्नुपर्ने, अन्यथा बिदा अवधिको तलब फिर्ता गर्नुपर्ने

### हज बिदा

- रोजगारदातासँग लगातार २ वर्ष काम गर्ने कामदारले पहिले हज नगरेको भए २१ दिनको तलबी हज बिदा पाउने

### अन्य बिदा

- रोजगारदाताले कामदारलाई सम्मेलन, वार्षिकोत्सव तथा श्रम सम्बन्धी बैठकमा सहभागी हुन तलबी बिदा दिन सक्ने

### बेतलबी बिदा (धारा ७९)

- कामदारको अनुरोधमा रोजगारदाताले वेतलबी बिदा दिन सक्ने

### तलब सम्बन्धी व्यवस्था (धारा ५५–६३)

- कार्य सम्झौता तथा रोजगारदाताको नियमावली बमोजिमको सेवा सुविधा बाहेक आधारभूत तलबको साथै आवधिक रुपमा बोनस, नगद लाभांश पाउने
- कामदारको बैक खातामा कुवेती दिनारमा तलब दिइने
- महिनावारी तलबमा काम गर्ने कामदारलाई प्रत्येक महिनाको एक पटक र अन्य कामदारलाई प्रत्येक दुई हप्ताको एक पटक (दैनिक तथा ज्यालादारी) तलब दिईने
- तलब दिंदा तलब दिनुपर्ने निर्धारित मितिभन्दा ७ दिन भन्दा बढी ढिलाई गर्न नपाइने
- रोजगारदाताको ऋण वा अन्य रकम तिर्न कामदारको तलबबाट मासिक १० प्रतिशत भन्दा बढी कट्टी गर्न नपाइने, उक्त ऋण वा तिर्न बाँकी रकममा ब्याज लिन नपाइने
- कामदारसँग सम्बन्धित सम्बन्ध विच्छेद पश्चात अदालतको निर्णयानुसार पति वा पत्नीलाई तिर्नुपर्ने रकम तथा अन्य ऋण (खाना, कपडा) का लागि कामदारको मासिक तलबबाट २५ प्रतिशतभन्दा बढी कटौती गर्न नपाइने

- रोजगारदाताले उत्पादन गर्ने खाद्यवस्तु वा अन्य सामान किन्न कामदार बाध्य नहुने
- रोजगारदाताले कामदारलाई दबाब दिन वा अन्य कारणले जानाजान काम बन्द गरेमा बन्द अवधिको तलब पाउने
- कामदारले पाउने आर्थिक सुविधाको गणना गर्दा निजको अन्तिम महिनाको तलबलाई आधार लिइने
- कुवेती श्रम मन्त्रीले कामको प्रकृति र मुद्रास्फितीलाई मध्यनजर गरी प्रत्येक ५ वर्षमा न्यूनतम तलब घोषणा गर्ने (धारा ६३), हालै मात्र ७५ के. डी. तोकिएको

## कार्य समय सम्बन्धी व्यवस्था (धारा ६४–६९)

- कानूनमा तोकिएको अवस्थामा बाहेक हप्ताको ४८ घण्टा, दिनको ८ घण्टा, रमादानको महिनामा हप्ताको ३६ घण्टा कार्य समय हुने
- लगातार ५ घण्टा काम गरेपछि कम्तिमा १ घण्टाको ब्रेक (कार्य समयमा गणना नगरिने) पाउने

  (तर वित्तीय, व्यापारिक र लगानीसँग सम्बद्ध कार्यालयमा लगातार ८ घण्टा काम लगाउन सकिने)
- अतिरिक्त काम दिनको २ घण्टा, एक वर्षमा अधिकतम १८० घण्टा, हप्तामा ३ दिन, वर्षमा ९० दिन भन्दा बढी हुन नहुने
- अतिरिक्त समयको कामको लागि शुरुको तलबमा २५ प्रतिशतले बृद्धि गरी भुक्तानी दिने
- एक हप्तामा कम्तिमा एक दिन बिदा दिनुपर्ने। बिदाको दिनमा काम लगाउनु पर्ने आवश्यक भएमा सो दिनको लागि ५० प्रतिशत बढी तलब र अर्को एक दिन बिदा पाउने
- कामदारको सेवा अवधिको समाप्तिपछि पाउने आर्थिक सुविधा (End of Service Benefit) कामदारले लिएको ऋण वा तिर्नुपर्ने अन्य रकम भए कट्टा गरी दिइने

- कार्य सम्झौता अवधि नतोकिएको अवस्थामा कामदारले ३ देखि ५ वर्ष सेवा गरी सम्झौता भंग गरेमा पाउने कूल रकमको आधा पाउने, ५ देखि १० वर्ष सेवा गरेको भएमा पाउने कूल रकमको दुई तिहाई पाउने, १० वर्ष बढी सेवा गरेको भएमा पुरै रकम पाउने
- सम्झौता भंग गर्ने कामदारले सेवा अवधि, पद, अन्तिम तलब उल्लेख भएको सेवा प्रमाणपत्र पाउने, रोजगारदाताले कामदारको रोजगारी पाउने सम्भावना प्रतिकूल हुने गरी कुनै कुरा उल्लेख गर्न नपाउने, कामदारको सबै कागजात, प्रमाणपत्र तथा अन्य वस्तुहरू रोजगारदाताले फिर्ता गर्नुपर्ने

## सुरक्षा र पेशागत स्वास्थ्य सम्बन्धी व्यवस्था (धारा ८०– ८८)

- रोजगारदाताले कामदारसँग सम्बन्धित रोजगार अनुमति, कार्य सम्झौता, Civil Id Card, वार्षिक बिदा, विरामी बिदा, अतिरिक्त कार्य गरेको विवरण र सो को तलब, कार्यस्थलमा लागेको चोटपटक, पेशागत रोग, पेनाल्टी, रोजगारबाट हटाइनुको कारण, कामदारको कागजात निश्चित फाइलमा अभिलेखबद्ध गर्नुपर्ने
- कामदार, मेसिन र अन्य सामाग्रीको सुरक्षाको लागि उपयुक्त सुरक्षा व्यवस्था गर्नुपर्ने
- रोजगारदाताले कार्यस्थलमा हुन सक्ने सम्भाब्य खतरा र सोबाट बच्ने उपाय बारे जानकारी र सुरक्षाका सरसामान उपलब्ध गराउनुपर्ने
- कामदारको स्वास्थ्य र पेशागत रोगबाट बचाउन पूर्व सावधानीका उपाय अवलम्बन गर्नुपर्ने
- कामदारले काम गर्दा सावधानी अपनाउने र सुरक्षाका औजारहरू प्रयोग गर्ने
- कामदारको बिमा हुनुपर्ने र काम गर्दा लागेको चोटपटक, पेशागत रोगको लागि बिमा कम्पनीबाट रोजगारदाताले विमा रकम दिलाउनुपर्ने

## कार्यस्थलमा हुने चोटपटक र पेशागत रोगको उपचार सम्बन्धी व्यवस्था (धारा ८९–९७)

- कार्यस्थलमा वा काम गर्न जाँदा वा आउँदा बाटोमा भएको चोटपटक बारे रोजगारदाता, कामदार वा निजको प्रतिनिधिले नजिकको प्रहरी कार्यालय, श्रम विभाग, सामाजिक सुरक्षाको कार्यालय, विमा कम्पनीलाई जानकारी गराउनुपर्ने
- कार्यस्थलमा हुने चोटपटक, दुर्घटना र पेशागत रोगको सरकारी वा निजी अस्पतालमा भएको कामदारको सम्पूर्ण उपचार खर्च रोजगारदाताले बेहोर्नुपर्ने
- डाक्टरले उपचार अवधि, असक्तताको सीमा, पुनः काम गर्न सक्ने क्षमताबारे रिपोर्ट पेश गर्ने
- कामदार र रोजगारदाता दुबै पक्षले मेडिकल रिपोर्टमा चित्त नबुझेमा जारी भएको १ महिनाभित्र स्वास्थ्य मन्त्रालयको Health Tribunal मा अस्विकार गर्न सक्ने
- उपचार अवधिभर पुरा तलब पाउने, ६ महिना नाघेमा निको नहुञ्जेलसम्म वा शारिरिकरुपमा असक्त वा मृत्यु नभएसम्म आधा तलब पाउने
- कामदार वा निजको नजिकको नातेदारले क्षतिपूर्तिको दावी गर्न पाउने
- सेवा अवधिमा वा राजिनामा दिएको १ वर्षपछि पेशागत रोग लागेमा वा लक्षण देखा परेमा क्षतिपूर्ति पाउने
- डाक्टर वा Medical Arbitration Panel ले रोजगारदाताहरूले तिनुपर्ने क्षतिपूर्तिको निर्धारण गर्ने

## कामदारले क्षतिपूर्ति नपाउने अवस्था (धारा ९५)

- कामदारले जानीबुझी चोटपटक लगाएमा
- मृत्यु वा २५ प्रतिशत शारिरिक क्षमता गुमाएको प्रमाणित भएको अवस्थामा वाहेक कामदारको लापरवाहीको कारण (लागू पदार्थ/मादक पदार्थ सेवन गरी काम गर्नाले) वा कार्यस्थलमा अवलम्बन गर्नुपर्ने निर्धारित सुरक्षा नियम उल्लंघन गर्दा चोटपटक लागेमा

## नेपाली श्रमिक कामदारको हक अधिकारको संरक्षणका लागि उत्तरदायी निकायहरू

- नेपाल सरकारका निकायहरू (नेपाली राजदूतावास, परराष्ट्र मन्त्रालय र मातहतका विभागहरू, श्रम मन्त्रालय र मातहतका विभागहरू, अध्यागमन विभाग, वैदशिक रोजगार प्रबर्द्धन बोर्ड)
- कुवेतका रोजगारदाता कम्पनीहरू
- कुवेतका सरकारी निकायहरू (परराष्ट्र मन्त्रालय, सामाजिक मामिला तथा श्रम मन्त्रालय, गृह मन्त्रालय र मातहतका निकायहरू, अदालत)
- कुवेतस्थित गैर अवासीय नेपाली संघ तथा नेपाली समुदायसँग सम्बन्धित संघसंस्थाहरू
- कुवेतस्थित क्षेत्रीय एवं अन्तर्राष्ट्रिय गैरसरकारी संघसंस्था (IOM, Red Cross, Humanitarian Organizations)

## कामदार स्वंयले ध्यान दिनुपर्ने कुराहरू:

- कुवेतको श्रम कानूनको पूर्ण रूपमा जानकारी राख्ने
- रोजगारदातासँग सुमधुर सम्बन्ध राख्ने
- कम्पनी व्यवस्थापनको लिखित स्वीकृति विना कामबाट कहिले अनुपस्थित् नहुने
- कुनै पनि Document वा कागजात राम्ररी नबुझी सही नगर्ने

- राजिनामा गरेको कागज, कार्य सम्झौता, तलब बुझेको भर्पाई, बिदाको निवेदन आदि सबै महत्वपूर्ण Document/कागजातहरू को एक प्रति आफूसँग राख्ने
- तोकिएको कार्य जिम्मेवारी, लगनशीलता एवं इमान्दारीपूर्वक गर्ने
- Civil Id Card, भिसा, राहदानीको बहालम्याद, सम्झौतापत्र समाप्त हुने मितिबारे जानकारी राख्ने, ती Document एकप्रति आफूसँग राख्ने
- गैरकानुनी एवं अवांछित कार्य नगर्ने
- रोजगारदातासँग छलफल गरी समस्याको शान्तिपूर्ण समाधान खोज्ने
- समस्याको समाधान नभएमा नेपाली राजदूतावाससँग सम्पर्क र कुराकानी गरी समाधानको बाटो खोज्ने
- कानुनी उपचार खोज्ने

## कुवेती अदालती संरचनाः कानुनी उपचारको प्रक्रिया

### पहिलो अदालत (Court of First Instance)

- सबैभन्दा तल्लो अदालत
- Shoon (Under Ministry of Social Affairs and Labour) मा समाधान नभएको श्रम सम्बन्धी समस्या हेर्ने क्षेत्राधिकार यसमा रहेको
- दण्डनीय मुद्दामा ३ वर्ष र २५० कुवेती दिनार भन्दा कम सजाय भएको निर्णय अन्तिम हुने अर्थात Appeal Court मा पुनरावेदन नहुने

### पुनरावेदन अदालत (Appeal Court)

- दोस्रो तहको अदालत
- Court of First Instance को निश्चित निर्णयहरू उपर पुनरावेदन सुन्ने

### सर्वोच्च अदालत (Supreme Court)

- सबैभन्दा माथिल्लो अदालत
- मुद्दाको अन्तिम फैसला गर्ने निकाय

## कानुनी उपचारको प्रक्रिया: Shoon बाट कानूनी उपचार खोज्ने तरिका

- कुवेतको ६ वटै Governorate हरूमा Shoon को Office रहेका
- कम्पनीसँग समाधान नभएका समस्याहरू Shoon Office मा गएर निवेदन दर्ता गर्ने
- कम्प्यूटरमा दर्ता भएको Case No. लिने
- Case दर्ता गरेको Paper को Copy आफूसँग राख्ने
- बोलाएको मितिमा हाजिर हुने
- आफ्नो मुद्दा हेर्ने सम्बन्धित अधिकारीको नाम र कोठा नं. याद गर्ने
- सम्बन्धित अधिकारीको निर्देशन बमोजिमको कार्यहरू गर्ने
- आवश्यक परेमा कानून व्यवसायीको सहयोग लिने
- उस्तै समस्या परेका साथी भाईहरूसँग राय सल्लाह लिने

*(Shoon Office मा समाधान नभएका समस्याहरू Court मा पठाईन्छ।)*

## नेपाली श्रमिकहरूले भोग्नु परेका प्रमुख समस्याहरू

- सम्झौता बमोजिमको काम नपाउने
- नियमित तलब नपाउने
- अन्य सेवा सुविधाहरू नपाउने
- कुवेती कानून विपरित राहदानी रोजगारदाताले राख्ने गरेको
- घर जानको लागि वार्षिक छुट्टी नपाउने
- खान, बस्न र कार्यालय आउन–जानका लागि यातायातको उचित व्यवस्था नभएको
- ओभरटाइम काम लगाए पनि उचित पारिश्रमिक नपाउने
- रोजगारदाताले कम्पनीमा काम गर्न छोडी भागेको मुद्दा (Run Away Case) लगाउने, साथै चोरी लागुपदार्थ, मादक पदार्थसँग सम्बन्धित मुद्दाहरू झेल्नु पर्ने
- गम्भीर प्रकृतिका मुद्दाहरूमा मृत्युदण्ड, आजीवन काराबास लगायत १५ वर्षसम्म सजाय भोग्नुपर्ने

- दुई वटा सम्झौतामा सही गराउने र सम्झौतामा उल्लेख भएको भन्दा कम तलब दिने
- समयमै आवासीय अनुमति (अकामा) नविकरण नगरिदिने
- आवासीय अनुमति (अकामा) को शुल्क तलबबाट कटाउने
- अर्को कम्पनीमा काम गर्ने अनुमति (Letter of Release) नपाउने
- कठिन काम र बढी काम गर्नुपर्ने
- कामदार आफैले आफ्नो Sponsor वा कम्पनीमा काम गर्न छोडी भागेर अर्को Sponsor वा कम्पनीमा काम गरी गैरकानुनी हुने

## समस्या समाधानः कसरी ?

### पहिलो विकल्प

- सरोकारवालाहरू (रोजगारदाता र कामदार) बीच छलफल र वार्ता
- शान्तिपूर्ण उपायको अवलम्बन गर्ने

### दोस्रो विकल्प

- राजदूतावास, वकिल, नेपाली संघसंस्था, नातागोता, साथीभाईसँगको सरसल्लाह

### तेस्रो विकल्प

- कानूनी उपचार (सुन र अदालत)

  (मुद्दा दायर गर्नु अघि सोच्ने - विश्वकै कानुनी प्रक्रिया झन्झटिलो)

## काम गर्दै गरेको कम्पनी छोडेर नयाँ कम्पनीमा काम गर्ने अनुमति (Letter of Release) कसरी लिने ?

साधारणतया कम्पनी क्षेत्रमा ३ वर्ष काम गरे पश्चात काम गर्दै गरेको कम्पनी छोडेर नयाँ कम्पनीमा काम गर्न लागि Release को लागि योग्य हुने

### Letter of Release पाउने अवस्था

- स्पोन्सरले काम, तलब दिन नसकेमा

- विभिन्न कारणले कम्पनी बन्द, खारेज भएमा
- कम्पनी बिक्री भएमा, अन्य कम्पनीमा गाभिएमा, आदि

  *(सरकारी Project सँग सम्बन्धित आवासीय आवासीय अनुमति (अकामा) भएका कामदारहरूले Letter of Release नपाउने)*

**Letter of Release लिनका लागि गर्नुपर्ने कार्यहरू**

- करार अवधि सकिए पछि कम्पनी व्यवस्थापनलाई जानकारी गराउने (मौखिक तथा लिखित रूपमा)
- नयाँ कम्पनीमा काम खोज्ने
- हालको कम्पनीबाट Letter of Release लिने
- नयाँ कम्पनीबाट आवासीय अनुमति (अकामा) लगाउने

## आवासीय अनुमति (अकामा) सम्बन्धी जानकारीहरू

- कम्पनीमा काम गर्ने दुई ओटा आवासीय अनुमति (अकामा) रहेका:
  - सरकारी क्षेत्र - Article 17
  - निजी क्षेत्र - Article 18
- आवासीय अनुमति (अकामा) को म्याद सकिनु दुई हप्ता अगाडि हालको Sponsor अन्तर्गत आवासीय अनुमति (अकामा) नवीकरण गर्नु पर्ने
- Work Permit नवीकरण गर्नुपर्ने
- विदेशी कामदारले आफ्नो श्रीमती र बच्चाहरूको Dependent भिसा मात्र Sponsor गर्न पाउने, बाबुआमा दाजुभाई दिदीबहिनीको Sponsor गर्न नपाउने
- Dependent भिसा Sponsor गर्न न्यूनतम मासिक तलब ४५० के.डी. हुनु पर्ने
- Project भिसामा रहेका कामदारहरू Project पुरा भएमा स्वदेश फर्कनु पर्ने, भिसा Transfer नहुने
- आवासीय अनुमति (अकामा) समयमा नवीकरण नगरेमा प्रति दिनको २ के. डी. जरिवाना तिर्नुपर्ने

## नेपाली राजदूतावासले नेपाली श्रमिकका हक हित संरक्षण एवं प्रबर्द्धनका लागि गर्दै आएका कार्यहरू

- समस्यामा परेका नेपाली कामदारहरूलाई सबै प्रकारका सहयोग प्रदान गरिएको
- कामदारको गुनासो, उजुरी एवं समस्या सुन्ने, रेकर्ड राख्ने र समाधान गर्ने गरिएको
- नेपालीहरूलाई समस्यामा पर्नबाट बचाउनका लागि गर्नु पर्ने कार्यहरू (Dos) र गर्न नहुने कार्यहरू (Don'ts) बारेमा विभिन्न सचेतनामूलक कार्यक्रमहरू संचालन
- कम्पनी र कामदारबीचका तलब, बिदा, Letter of Release लगायत विभिन्न विषयका विवादको सम्बन्धित कम्पनीसँग कुराकानी, पत्राचार एवम् वार्ताद्वारा समाधान गरिएको
- कानूनी उपायको सल्लाह दिने, कानून व्यवसायीको सहयोग उपलब्ध गराउने र सहजीकरण गर्ने गरिएको
- मृतक तथा घाईते कामदारहरूको क्षतिपूर्तिका लागि कानूनी पहल तथा क्षतिपूर्ति रकम प्राप्ति गरी नेपालमा रहेका मृतकका कानूनी हकदारहरूलाई पठाउने कार्य गरिएको
- गैरकानूनी हैसियतमा रहेका नेपालीहरूलाई घर फिर्तीमा सहयोग गरिएको
- नेपाली कामदारहरूलाई अलपत्र पार्ने वा समस्यामा पार्ने कम्पनी तथा म्यानपावर एजेन्सीलाई जिम्मेवार बनाउने कार्य गरिएको
- NRN, नेपाली संघसंस्थाहरू, स्थानीय मिडियाकर्मीसँग सहकार्य गरी कामदारका समस्या समाधानको कार्य गरिएको
- कुवेतका उत्तम कम्पनीहरूमा रोजगारीको खोजी एवं प्रबर्द्धन गर्ने कार्य गरिएको
- जेलमा रहेका नेपाली नागरिकहरूलाई कन्सुलर सेवा प्रदान तथा कानूनी सहायता लिनका लागि सहजीकरण गरिएको
- गम्भीर रोग वा चोटपटक लागि अस्पतालमा उपचार गराइरहेका नेपाली कामदारहरूलाई सहयोग प्रदान गरिएको

## कुवेतको घरेलु कामदार सम्बन्धी कानून

- १५ जुलाई २०१५ मा कुवेतको संसदबाट जारी भएको (गृह मन्त्रालयको निर्णय बमोजिम अन्य कुराहरू स्पष्ट गर्दै लगिने)
- घरेलु कामदार भन्नाले निजी घरमा काम गर्ने पुरूष तथा महिला दुवैलाई जनाउने
- कामदारको उमेर २१ देखि ६० बर्ष मुनिको तोकिएको
- कामदार तथा घरमालिक (Sponsor) बीच विवाद भएमा Domestic Labour Department ले त्यस सम्बन्धी उजुरी हेर्ने । विभागले समाधान गर्न नसकेको विवाद अदालतले हेर्ने
- मासिक तलव, कार्य घण्टा, वार्षिक विदा तोकीएको (कति दिन वार्षिक विदा दिने भन्ने नखुलेको)
- रोजगारदाताको घरबाट भाग्ने कामदारलाई निर्वासित गरिने
- व्यक्तिको निजी घरमा काम गर्न पर्ने भएकोले कामदारले पूर्णरूपमा घरमालिक (Sponsor) को निर्देशन एवं नियन्त्रणमा रहेर काम गर्नु पर्ने

अधिकार र कर्तव्य एउटै सिक्काका दुई पाटा हुन ।
(Rights and duties are two equal sides of the same coin)

# कुवेतको अध्यागमन कानून

## कुवेतको भिसा सम्बन्धी जानकारी

### १. भ्रमण भिसा (Visit Visa)

- जारी भएको मितिदेखि ९० दिनको बहाल म्याद हुने
- कुवेत आएको मितिदेखि ३० दिनसम्म मात्र बस्न पाउने
- ३ के. डी. भिसा शुल्क लाग्ने
- कुवेती नागरिक वा कुवेती कम्पनी वा कुवेतमा आवासीय भिसामा रहेको विदेशी नागरिकले निजलाइ स्पोन्सर गर्नुपर्ने
- व्यापारिक प्रयोजनार्थ भ्रमण भिसामा कुवेत आउने व्यक्तिलाई स्पोन्सर गर्ने कुवेती नागरिक वा कम्पनीले पेश गर्नुपर्ने कागजातहरूः
  - ✓ भिसा आवेदन तथा सुरक्षा फारम
  - ✓ भ्रमण गर्ने व्यक्तिको राहदानीको प्रतिलिपि
  - ✓ स्पोन्सरको सक्कल राहदानी र सो को प्रतिलिपि
  - ✓ स्पोन्सरको सक्कल Civil ID र सो को प्रतिलिपि
  - ✓ व्यापारिक प्रयोजनका लागि दर्ता गरिएको स्पोन्सरको हस्ताक्षरको प्रतिलिपि
  - ✓ भ्रमणको उदेश्यसहित स्पोन्सरले लेखेको निमन्त्रणा पत्रको प्रतिलिपि
- आवासीय भिसामा रहेको विदेशी नागरिकले आफ्नो नातेदारको भ्रमण भिसाका लागि पेश गर्नुपर्ने कागजातहरूः
  - ✓ भिसा आवेदन तथा सुरक्षा फारम
  - ✓ भ्रमण गर्ने नातेदारको राहदानीको प्रतिलिपि

- ✓ स्पोन्सरको सक्कल राहदानी र सो को प्रतिलिपि
- ✓ स्पोन्सरको सक्कल Civil ID र सो को प्रतिलिपि
- ✓ स्पोन्सरको रोजगार अनुमतिपत्र (Work Permit) को सक्कल र सो को प्रतिलिपि
- ✓ आधिकारिक नाता प्रमाणित प्रमाणपत्र

- एक पटकमा ३० दिनको लागि २ पटकसम्म कुवेती अध्यागमन विभागमा आवेदन दिइ म्याद थप गर्न सकिने
- बहाल म्याद समाप्त भएपछि वा म्याद थप नगरी बसेमा १ दिनको लागि १० के. डी. जरिवाना लाग्ने
- जरिवाना नतिरेसम्म कुवेत बाहिर जान नपाइने
- भ्रमण भिसामा रहेको व्यक्तिले रोजगार गर्न नपाउने र रोजगारी गर्न चाहेमा रोजगार अनुमतिपत्र (Work Permit) र आवासीय भिसा आवश्यक पर्ने

## २. व्यवसायिक भिसा (Business Visa)

- ✓ कुवेतमा व्यापारिक तथा व्यवसायिक कार्यहरू गर्नका लागि दिइने भिसा
- ✓ आवश्यक कागजातहरू:
  - भिसा आवेदन तथा सुरक्षा फारम
  - भ्रमण गर्ने व्यक्तिको राहदानीको प्रतिलिपि
  - व्यापारिक प्रयोजनका लागि दर्ता गरिएको स्पोन्सरको हस्ताक्षरको प्रतिलिपि
  - भ्रमणको उदेश्यसहित स्पोन्सरले लेखेको निमन्त्रणा पत्रको प्रतिलिपि

### ३. मल्टिपल प्रवेशाज्ञा भिसा (Multiple Entry Visa)

- ✓ सामान्यतया १ वर्षको बहाल अवधि रहने
- ✓ निश्चित देशका नागरिकहरूलाई १० वर्षसम्मको बहाल अवधिको भिसा दिइने
- ✓ बहाल अवधिभित्र जति पटक पनि कुवेत आउन-जान सकिने

### ४. ट्रान्जिट भिसा (Transit Visa)

- ✓ ७ दिनको बहालम्याद रहने
- ✓ कुवेतको विदेशस्थित कन्सुलेट तथा कुवेतको बन्दरगाहमा रहेको निकायबाट प्राप्त गर्न सकिने
- ✓ अर्को गन्तब्य मुलुक जाने हवाइटिकट अनिवार्य हुनुपर्ने

### ५. रोजगार भिसा (Employment Visa) [आर्टिकल १८ र १७]

- ✓ कुवेतको सार्वजनिक क्षेत्रमा काम गर्नका लागि भिसा १७ र निजी क्षेत्रमा काम गर्नका लागि भिसा १८ दिइने
- ✓ रोजगारको अनुमति स्वीकृत भएपछि आवासीय भिसा प्राप्त गर्न सकिने
- ✓ कुवेती रोजगारदाताले सामाजिक मामिला तथा श्रम मन्त्रालयबाट श्रमिकको राहदानी पेश गरी रोजगार अनुमति प्राप्त गर्ने र श्रमिकको व्यक्तिगत विवरण पेश गरी No objection Letter प्राप्त गर्ने
- ✓ श्रमिकले रोजगार अनुमतिपत्र र अन्य आवश्यक कागजातहरू (रोजगारी अनुमतिपत्र, मेडिकल प्रमाणपत्र, चालचलन प्रमाणपत्र आदि) पेश गरी प्रवेशाज्ञा भिसा लिइ कुवेत आउन सक्ने
- ✓ घरेलु कामदार भिसा (आर्टिकल २०)

### ६. आवासीय भिसा (Residency Permit)

- ✓ ५ वर्षसम्मको बहाल अवधिको दिइने
- ✓ कुवेतको सरकारी निकायमा काम गर्ने व्यक्तिले भिसा शुल्क आफै तिर्नुपर्ने
- ✓ कुवेतको निजी क्षेत्रमा कामगर्ने व्यक्ति स्वयंले तिर्नुपर्ने
- ✓ नविकरणको लागि व्यक्ति पहिलो रोजगारदातासँग काम गरेको हुनुपर्ने
- ✓ आवश्यक कागजातहरू
  - रोजगार अनुमतिपत्र
  - राहदानीको सक्कल र सो को प्रतिलिपी
  - सुरक्षा पास प्रमाणपत्र
  - पासपोर्ट साइजको फोटो

### ७. अस्थायी आवासीय भिसा (Temporary Residency Permit) [आर्टिकल १४]

- ✓ १ वर्ष सम्मको बहाल म्याद रहने
- ✓ आवासीय भिसा आवश्यक नपर्ने तथा जारी गर्न नसकिने अवस्थामा दिइने
- ✓ बिरामी तथा अन्य कारणले केही समय कुवेत बस्नुपर्ने बाध्यता आइपरेमा दिइने
- ✓ आवासीय भिसामा कुवेतमा रहेकाहरूको नातेदारको (आमा, बुवा, दिदीबहिनी मात्र) भिसाको म्याद समाप्त भएमा दिइने
- ✓ आर्थिक कारोबार वा अदालती मुद्दा सल्ट्याउनका लागि विदेशी नागरिकहरूलाई २–३ महिनाको बहाल म्याद राखी दिइने

## ८. आश्रित पारिवारिक भिसा (Dependent family Visa) [भिसा २२]

- ✓ कुवेतमा कार्यरत पुरुषले आफ्नो श्रीमती वा छोरोछोरीलाई स्पोन्सर गर्न सक्ने (भिसा १७ मा भएमा ४५० के. डी. र भिसा १८ मा भएमा ६५० के. डी. मासिक आम्दानी हुनुपर्ने)
- ✓ श्रीमान र श्रीमती दुवै जना कुवेतमा कार्यरत भएमा छोराछोरीको स्पोन्सर गर्न संयुक्त रुपमा न्यूनतम ३५० के.डी. आम्दानी हुनुपर्ने
- ✓ श्रीमतीले श्रीमानको स्पोन्सर गर्न नसक्ने
- ✓ २१ वर्ष भन्दामाथिको छोरालाई स्पोन्सर गर्न नमिल्ने
- ✓ आवश्यक कागजातहरू:
    - स्पोन्सरको तलब प्रमाणपत्र, सिभिल परिचय–पत्र, डिपेन्डेन्टको राहदानीको प्रतिलिपि, आधिकारिक विवाह दर्ता प्रमाणपत्र वा जन्म दर्ता प्रमाणपत्र
    - कुवेतमा कार्यरत आमा–बाबुबाट जन्मेको नाबालकलाई दिइने (नाबालकको नाम बाबुको राहदानीमा समावेश हुनुपर्ने वा नाबालकको राहदानी हुनुपर्ने)
    - नाबालकको लागि बर्हिगमन (एक्जिट) भिसा लिनुपर्ने भएकोले घरेलु कामदारमा रहेका आमा–बाबुले यस्तो नाबालकलाई कुवेतमा राख्न नसक्ने

## ९. आफ्नै स्पोन्सरमा प्राप्त हुने भिसा (Self Sponsored Visa)

- ✓ विदेशी नागरिकले आफ्नै स्पोन्सरसिपमा २ देखि ५ वर्षसम्मको बहालम्यादको भिसा २४ प्राप्त गर्नसक्ने
- ✓ बहाल म्याद समाप्तिपछि पुन:नवीकरण गर्न सकिने
- ✓ श्रीमती र छोराछोरीलाई स्पोन्सर गर्न र व्यापार, व्यवसाय गर्नसक्ने

## १०.बहिर्गमन भिसा (Exit Visa)

- ✓ कुवेतको मन्त्रालय तथा अन्य सरकारी निकायमा कार्यरत विदेशी नागरिकलाई कुवेत बाहिर जानको लागि चाहिने
- ✓ अन्य विदेशी नागरिकको लागि नचाहिने

*(स्रोतः visit-kuwait.com)*

## निर्वासन (Deportation) गरिने अवस्थाहरू

निम्न अवस्थामा कुवेतबाट विदेशी नागरिकहरूलाई निर्वासित (Deportation) गरिने भएकोले त्यस्ता कार्यहरू नगर्नेः

- आवासीय अनुमति (अकामा) विना बसेमा
- आपराधिक कार्य गरेमा
- ट्राफिक नियमको उल्लङ्घन गरेमा
- सवारी चालक अनुमति पत्र (License) विना सवारी चलाएमा
- सम्बन्धित निकायको स्विकृती विना चन्दा (Donation) संकलन गरेमा
- गैर कानूनी एवं अवांछित क्रियाकलाप गरेमा
- श्रम कानूनको उल्लङ्घन गरेमा
- कार्यस्थलमा वा अन्य कुनै स्थानमा हडताल, काम बन्द गरेमा
- शान्ति सुरक्षामा खलल पारेमा
- मादक पदार्थ सेवन तथा कारोवार गरेमा
- सामाजिक सञ्जाल (Facebook, Twitter, Instagram आदि) र E-mail को दुरूपयोग गरेमा
- निषेधित क्षेत्रको फोटो खिचेमा (जस्तैः-Gas Plant, Oil Refinery आदि)

**साथै,**

- कुवेतको प्रचलित श्रम तथा अध्यागमन कानूनको अध्ययन एवं पालना गर्ने र आफ्नो काम लगनशीलता, जिम्मेवारी एवं इमान्दारीपूर्वक सम्पादन गर्ने
- Civil ID Card, राहदानी, भिसा, कार्य संझौता आदि सुरक्षित रूपमा राख्ने र समयमै नवीकरण गर्ने
- आवेग, रिस वा प्रलोभनमा आई गलत/गैरकानुनी कार्यमा संलग्न नहुने
- कुनै समस्या भएमा नेपाली राजदूतावास, वकिल, नातागोता, साथीभाई, नेपाली संघसंस्थासँग परामर्श गरी उचित समाधानको बाटो खोज्ने।

रोग लागिसकेपछि उपचार गर्नु भन्दा रोग लाग्न नदिनु अझ राम्रो हो
**(Prevention is better than cure)**

# कुवेतमा रहँदा नेपाली नागरिकहरुले गर्नुपर्ने कार्यहरु (Dos) एवं गर्न नहुने कार्यहरु (Don'ts)

रोजगारीको सिलसिलामा कुवेतमा रहेका नेपाली नागरिकहरुमध्ये कतिपय नेपालीहरु जानेर वा नजानेर रोजगारी परिर्वतन गर्ने र अवैधानिक हुने, ट्राफिक नियमको पालनाको अभावमा सडक दुर्घटनामा मृत्यु हुने, आर्थिक लेनदेनबाट ठगीमा पर्ने, कुवेतको कानून, धर्म, एवं परम्परा विपरितका क्रियाकलापमा संलग्न भई पक्राउ एवं जेलमा पर्ने जस्ता विभिन्न समस्यामा पर्ने गरेको पाईएको छ। यस्ता कुनैपनि समस्याहरु उत्पन्न हुन नदिन, कुवेतको बसाईलाई सहज बनाउन र नेपाल तथा कुवेतबीचको सम्बन्ध सुदृढ गर्दै लैजानका लागि नेपालीहरुले गर्नुपर्ने र गर्न नहुने देहायबमोजिमका कार्यहरुमा ध्यान दिनुहुन कुवेतस्थित सम्पूर्ण नेपाली नागरिकहरुलाई नेपाली राजदूतावास, कुवेत हार्दिक अनुरोध गर्दछः

## गर्नुपर्ने कार्यहरु (Dos)

क. आफ्नो कार्य लगनशीलता, मेहनत एवं इमान्दारीताका साथ गर्नुहोला।

ख. कुवेतको कानूनको पालना गर्नुहोला।

ग. राहदानी (Passport) तथा आवासीय अनुमति (अकामा) को म्याद सकिनु भन्दा पहिले नै नयाँ राहदानी र आवासीय अनुमति लिनुहोला।

घ. आफ्नो राहदानी (Passport), आवासीय अनुमति, Civil ID, Bank Card आदि एकप्रति Photocopy सहित सुरक्षित रुपमा राख्नुहोला। विना कारण त्यस्ता कागजपत्र कसैलाई नदिनुहोला।

ङ. नेपालमा रहेका आफ्नो परिवारसंग नियमित रुपमा सम्पर्कमा रही आफ्नो अवस्थाको बारेमा जानकारी गराउनुहोला।

च. रोजगारीबाट आफुले आर्जन गरेको रकमको सदूपयोग गरी वचत रकम नेपाल पठाउँदा बैंक तथा आधिकारिक मनी ट्रान्सफर एजेन्सीमार्फत् पठाउनुहोला।

छ. कार्यस्थलमा कुनै समस्या वा गुनासा भएमा सर्वप्रथम सम्बन्धित रोजगारदातासंग समाधानका लागि आग्रह गर्नुहोला र समाधान नभएमा नेपाली राजदूतावासमा सम्पर्क गर्नुहोला।

ज. आफु कार्यरत कम्पनी, घरमालिक (Sponsor) वा अरु कसैले पनि कुनै कागजातमा सही गर्न भनेमा राम्रोसंग बुझेर सही गर्नुपर्ने भएमा मात्र गर्नुहोला।

झ. कुवेतमा समस्यामा परेका अन्य नेपालीलाई आफुले सक्ने मद्दत गर्नुहोला।

ञ. खानपीन, पहिरन र रहनसहनमा उचित ध्यान दिनुहोला।

ट. बाटो काट्दा ट्राफिक नियमको पालना गर्नुहोला र जेब्रा क्रसिङबाट मात्र बाटो काट्नुहोला।

ठ. अरेबिक भाषा र अंग्रेजी भाषाको राम्रो जानकारी राख्नुहोला।

ड. नेपालका महत्वपूर्ण पर्यटकीय आकर्षणहरुको बारेमा कुवेती एवं अन्य देशका नागरिकहरुलाई जानकारी गराई नेपाल भ्रमणमा जान प्रोत्साहित गर्नुहोला।

ढ. नेपालका सकारात्मक र सवल पक्षहरुको बारेमा कुवेती एवं अन्य विदेशीहरुलाई जानकारी गराउनुहोला।

ण. अन्य व्यक्तिहरुसंग रकम लेनदेन गर्दा भर्पाइ, प्रमाण राख्नुहोला।

त. फुर्सदको समयमा आफनो क्षमता विकासका कार्यहरु गर्नुहोला।

थ. नेपाल र नेपालीको गौरव एवं इज्जत बढाउने कार्यहरु गर्नुहोला।

## गर्न नहुने कार्यहरु (Don'ts)

क. कुवेतको कानून, धर्म र संस्कृति विपरितका कुनैपनि कार्यहरु नगर्नुहोला।

ख. लागूपदार्थको ओसार पसार, सेवन एवं बेचबिखन नगर्नुहोला।

ग. मदिरा (जाँडरक्सी) उत्पादन, सेवन एवं बेचबिखन नगर्नुहोला।

घ. नेपाली नागरिक एवं विदेशीहरुसंग अनावश्यक जमघट, झगडा, होहल्ला, कुटपीट जस्ता कार्यहरु नगर्नुहोला। कुनै पनि प्रकारका हतियार साथमा लिएर नहिंड्नुहोला।

ङ. आर्थिक प्रलोभनमा परेर हाल कार्यरत घर/कम्पनीबाट नभाग्नुहोला, अन्य नेपालीलाई भाग्न नउक्साउनुहोला र अर्को कार्यस्थलमा गैरकानूनी रुपमा काम नगर्नुहोला एवं गर्न प्रेरित नगर्नुहोला।

च. गैरकानूनी रुपमा महिला एवं पुरुष संगै बसोबास नगर्नुहोला।

छ. स्वीकृति विना कार्यस्थलमा अनुपस्थित नहुनुहोला र कार्यस्थलमा हड्ताल नगर्नुहोला।

ज. अन्य व्यक्तिको Civil ID, Bank Card इत्यादि प्राप्त गरेमा दुरुपयोग नगर्नुहोला। त्यस्ता कार्ड वा कागजात नजिकको प्रहरी कार्यालयमा वा नेपालीको भए नेपाली राजदूतावासमा बुझाउनुहोला।

झ. सवारी चालक अनुमतिपत्र बिना सवारी साधन नचलाउनुहोला।

ञ. फेसबुक, ट्वीटर, इमेलजस्ता संचार माध्यमको दुरुपयोग नगर्नुहोला।

ट. रमजानको समयमा निषेधित समयमा कुनैपनि खानेकुराहरु खुला रुपमा नखानुहोला।

ठ. महिलाहरुलाई कुविचार वा कुदृष्टिले नहेर्नुहोला।

ड. ठगी एवं चोरी नगर्नुहोला र त्यस्तो मनसायले कुनैपनि कार्य नगर्नुहोला।

ढ. निषेधित क्षेत्रमा धुम्रपान नगर्नुहोला।

ण. सुरक्षित र भरपर्दो नभएसम्म कसैसंग पनि रकम लेनदेन नगर्नुहोला।

त. अत्यधिक गर्मीमा बढी काम नगर्नुहोला, त्यसपछि तुरुन्तै बढी चिसोमा नबस्नुहोला र बढी चिसो खानेकुरा पनि नखानुहोला।

थ. नेपाल र नेपालीको गौरव एवं इज्जतमाथि आँच आउने कुनै पनि कार्यहरु नगर्नुहोला।

**कानुन थाहा छैन भनेर उम्कन पाइँदैन**
**(Ignorance of Law is no excuse)**

# नेपाली राजदूतावास, कुवेतबाट प्रदान गरिने सेवाहरू र सो को निम्ति पुरा गर्नुपर्ने प्रक्रियाहरू

## कागजात प्रमाणीकरण (Attestation)

- **सवारी चालक अनुमति-पत्र प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया (Attestation of Driving License)**

**१. सवारी चालक अनुमति-पत्र प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरूः**

क) नेपालको सक्कल सवारी चालक अनुमति-पत्र र सो को प्रतिलिपि

ख) सवारी चालक प्रमाणपत्र जारी गर्ने कार्यालयबाट English मा जारी गरिएको सवारी चालक प्रमाणपत्र बाहकको विवरण र सो विवरण कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको सक्कल प्रति

ग) राहदानी वा नागरिकता प्रमाणपत्रको प्रतिलिपि

घ) कुवेतको Civil ID वा कुवेतको आवासीय अनुमति (अकामा) को प्रतिलिपि

**२. सवारी चालक अनुमति-पत्र प्रमाणीकरण समयः**

बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शूल्कः** ५ कुवेती दिनार

**४. सवारी चालक अनुमति-पत्र प्रमाणीकरण गर्न लाग्ने समयः** १ कार्य दिन

आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी आवेदन दिएको १ कार्य दिनमा (२४ घण्टा) र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पूरा भएपश्चात मात्र सवारी चालक अनुमति-पत्र प्रमाणीकरण गरिनेछ।

## ▪ विवाह दर्ता प्रमाणपत्र प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया (Attestation of Marriage Certificate)

**१. विवाह दर्ता प्रमाणपत्रको प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरूः**

क) कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणित गरिएको विवाह दर्ताको सक्कल प्रमाणपत्र

ख) श्रीमान र श्रीमती दुबैको नागरिकता प्रमाणपत्र र राहदानीको प्रतिलिपि

ग) कुवेतको Civil ID को प्रतिलिपि (दुबै जना कुवेतमा भएको हकमा श्रीमान र श्रीमतीको Civil ID र श्रीमान र श्रीमतीमध्ये एकजना कुवेतमा भएको हकमा निजको Civil ID को प्रतिलिपि)

**२. विवाह दर्ता प्रमाणपत्र प्रमाणीकरण गर्ने समय:**

बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शुल्क:** ५ कुवेती दिनार

**४. विवाह दर्ता प्रमाणपत्रको प्रमाणीकरण गर्न लाग्ने समय:** १ कार्य दिन

आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी विवाह दर्ता प्रमाणपत्र प्रमाणीकरणका लागि आवेदन दिएको १ कार्य दिनमा (२४ घण्टा) र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पूरा भएपश्चात विवाह दर्ता प्रमाणपत्र प्रमाणीकरण गरिनेछ।

## ▪ शैक्षिक प्रमाणपत्र प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया (Attestation of Academic Certificate)

**१. शैक्षिक प्रमाणपत्रको प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरूः**

क) कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको शैक्षिक प्रमाणपत्रको सक्कल प्रमाणपत्र वा सो को प्रमाणित प्रतिलिपि

ख) नागरिकता प्रमाणपत्र र राहदानीको प्रतिलिपि

ग) सम्बन्धित व्यक्तिको Civil ID को प्रतिलिपि

**२. शैक्षिक प्रमाणपत्र प्रमाणीकरण समय:** बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शुल्क:** ५ कुवेती दिनार

**४. शैक्षिक प्रमाणपत्र प्रमाणीकरण गर्न लाग्ने समय:** १ कार्य दिन

आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी आवेदन दिएको १ कार्य दिनमा (२४ घण्टा) र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पूरा भए पश्चात मात्र शैक्षिक प्रमाणपत्रको प्रमाणीकरण गरिनेछ।

- ## अविवाहित प्रमाणपत्र प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया (Attestation of Unmarried Certificate)

**१. अविवाहित प्रमाणपत्र प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरू:**

क) नेपालको स्थानीय निकायबाट जारी भई कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको सक्कल अविवाहित प्रमाणपत्र

ख) नागरिकता प्रमाणपत्र र राहदानीको प्रतिलिपि

ग) कुवेतको Civil ID को प्रतिलिपि

घ) सम्बन्धित ब्यक्तिको बाबु र आमाको नागरिकता प्रमाणपत्रको प्रतिलिपि

**२. अविवाहित प्रमाणपत्र प्रमाणीकरण गर्ने समय:**

बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शूल्क:** ५ कुवेती दिनार

**४. अविवाहित प्रमाणपत्र प्रमाणीकरण गर्न लाग्ने समय:** १ कार्य दिन

आवश्यक सबै कागजात र प्रक्रिया पुरा गरी आवेदन दिएको १ कार्य दिनमा (२४ घण्टा) र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पुरा भएपश्चात अविवाहित भएको प्रमाणपत्रको प्रमाणीकरण गरिनेछ।

- ## नातासम्बन्ध प्रमाणपत्र प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया (Attestation of Relationship Certificate)

**१. नातासम्बन्ध प्रमाणपत्रको प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरूः**

क) नेपालको स्थानीय निकायबाट जारी भई कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको नातासम्बन्ध खुल्ने सक्कल प्रमाणपत्र

ख) सम्बन्धित ब्यक्तिको नागरिकता प्रमाणपत्र र राहदानीको प्रतिलिपि

ग) कुवेतको Civil ID को प्रतिलिपि

**२. नातासम्बन्ध प्रमाणपत्रको प्रमाणीकरण गर्ने समयः**

बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शुल्कः** ५ कुवेती दिनार

**४. नातासम्बन्ध प्रमाणपत्र प्रमाणीकरण गर्न लाग्ने समयः** १ कार्य दिन

आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी आवेदन दिएको १ कार्य दिनमा (भोलिपल्ट) र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पूरा भएपश्चात नातासम्बन्ध प्रमाणपत्र प्रमाणीकरण गरिनेछ।

- ## जन्मदर्ता प्रमाणपत्र प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया (Attestation of Birth Certificate)

**१. जन्मदर्ता प्रमाणपत्रको प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरूः**

क) नेपालको स्थानीय निकाय (गाउँपालिका वा नगरपालिका) बाट जारी भई कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको सक्कल जन्मदर्ता प्रमाणपत्र (नेपालमा जन्मेको नाबालकको हकमा)

ख) कुवेत सरकारको आधिकारिक निकायबाट जारी भएको सक्कल जन्मदर्ता प्रमाणपत्र र सो को कुवेतको परराष्ट्र मन्त्रालयबाट प्रमाणीकरण गरिएको अंग्रेजी अनुवाद (कुवेतमा जन्मेको नाबालकको हकमा)

ग) बाबु र आमा दुबैको नागरिकता प्रमाणपत्र र राहदानीको प्रतिलिपि

घ) बाबु र आमाको Civil ID को प्रतिलिपि

ङ) बाबु र आमाको विवाह नेपालमा भएको हकमा कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको सक्कल विवाह दर्ता प्रमाणपत्र

च) बाबु र आमाको विवाह कुवेतमा भएको हकमा कुवेत सरकारको आधिकारिक निकायबाट जारी भएको सक्कल विवाह दर्ता प्रमाणपत्र र सो को कुवेतको परराष्ट्र मन्त्रालयबाट प्रमाणीकरण गरिएको अंग्रेजी अनुवाद

**२. जन्मदर्ता प्रमाणपत्रको प्रमाणीकरण समय:**

बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शुल्क:** ५ कुवेती दिनार

**४. जन्मदर्ता प्रमाणपत्र प्रमाणीकरण गर्न लाग्ने समय:** १ कार्य दिन

आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी आवेदन दिएको १ कार्य दिनमा (२४ घण्टा) र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पूरा भएपश्चात मात्र जन्मदर्ता प्रमाणपत्र प्रमाणीकरण गरिनेछ।

## ▪ पारपाचुके (सम्बन्ध विच्छेद) प्रमाणपत्र प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया (Attestation of Divorce Certificate)

**१. पारपाचुके (सम्बन्ध विच्छेद) प्रमाणपत्र प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरू:**

क) कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको पारपाचुके (सम्बन्ध विच्छेद) प्रमाणपत्रको सक्कल प्रमाणपत्र

ख) नेपालको अदालतबाट पारपाचुके (सम्बन्ध विच्छेद) भएको सम्बन्धमा अदालतको निर्णयको प्रतिलिपि

ग) पारपाचुके (सम्बन्ध विच्छेद) गर्ने व्यक्तिको नागरिकता प्रमाणपत्र र राहदानीको प्रतिलिपि

घ) Civil ID को प्रतिलिपि

**२. प्रमाणीकरण गर्ने समय:**

बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शूल्कः** ५ कुवेती दिनार

**४. प्रमाणीकरण गर्न लाग्ने समयः** १ कार्य दिन

आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी आवेदन दिएको १ कार्य दिनमा (२४ घण्टा) र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पूरा भएपश्चात पारपाचुके (सम्बन्ध विच्छेद) प्रमाणपत्र प्रमाणीकरण गरिनेछ।

- **कम्पनी क्षेत्रमा नेपाली कामदार मागपत्र स्वीकृती (Demand Letter Approval ) प्रक्रिया**

**१. नेपाली कामदारहरू माग गर्न चाहने कुवेतका कम्पनीहरूले यस राजदूतावासबाट मागपत्र प्रमाणीकरण गर्दा संलग्न गर्नुपर्ने कागजातहरूः**

(क) कम्पनीको Letterhead मा आवश्यक पर्ने कामदारको पद, संख्या, मासिक तलब स्केल तथा कम्पनीले कामदारलाई दिने अन्य सुविधाहरू उल्लेख गरिएको मागपत्र (Demand Letter)

(ख) कुवेतको रोजगारदाता कम्पनीले कामदार उपलब्ध गराउन नेपालको Manpower Company का नाममा दिएको अख्तियारनामा पत्र (Authorization Letter)

(ग) कम्पनीले कामदारलाई तेस्रो मुलुकमा नपठाइने, सुरक्षित र सुहाउँदो Accommodation प्रदान गरिने, महिला कामदार भएमा महिलाको छुट्टै Living Quarter मा कोठा दिइने तथा निःशुल्क हवाई टिकट र भिसा उपलब्ध गराउने भन्ने कुराहरू उल्लेख गरी नेपालको वैदेशिक रोजगार विभागलाई सम्बोधन गरी लेखिएको Guarantee Letter

(घ) कामदार र कम्पनीबीचमा गरिने Employment Contract को नमूना

(ङ) कुवेतको रोजगारदाता कम्पनी र नेपालको म्यानपावर कम्पनीबीच गरिएको सम्झौता (Agreement)

(च) कुवेतको रोजगारदाता कम्पनी तथा नेपालको Manpower Company को Valid License को फोटोकपी, रोजगारदाता कम्पनीको Authorized Signatory तथा Owner को Civil ID Card को फोटोकपी

(छ) माग गरिएको पद र संख्या मिल्ने गरी सम्बन्धित कम्पनीको नाममा कुवेतको Ministry of Social Affairs and Labour बाट तोकिएको Quota उल्लेख भएको विगत ३ महिना भित्र जारी गरिएको पत्र

(ज) कुनै आयोजना (Project) को लागि कामदार माग गरेको भएमा वा अर्को कम्पनीमा कामदार Supply गर्ने सम्झौता गरेको भएमा सो सम्झौताको पत्र।

माथि उल्लेख भएको (क) देखि (च) सम्मका कागजातहरू कुवेतको परराष्ट्र मन्त्रालय र Chamber of Commerce बाट प्रमाणित गरिएको हुनुपर्नेछ। अरबी भाषामा भएका कागजातहरू अंग्रेजी भाषामा अनुवाद गरिएको हुनुपर्नेछ।

२. **मागपत्र दर्ता गर्ने समयः** विहान ९ बजेदेखि दिउँसो १ बजेसम्म, आइतबारदेखि बिहीबारसम्म।

३. **मागपत्र स्वीकृती शुल्कः** ७५ कुवेती दिनार प्रति मागपत्र।

राजदूतावासमा पेश गरिएका सबै कागजातहरू सम्बन्धित अधिकारीले जाँच गरी दुरुस्त भएमा दर्ता गराउनुपर्ने र भोलिपल्टसम्म स्वीकृत (Approve) गरी कागजात फिर्ता दिइनेछ। तर कम्पनीको भ्रमण गरी थप कुरा बुझ्नु पर्ने देखिएमा भ्रमण पश्चात मात्र मागपत्र स्वीकृत वा अस्वीकृत भएको सम्बन्धमा जानकारी दिइनेछ।

## ▪ कम्पनी क्षेत्रमा व्यक्तिगत रूपमा काम गर्न आउने स्वीकृती (Individual Work Permit Approval) प्रक्रिया

व्यक्तिगत रूपमा कुवेतमा काम गर्न आउनको लागि निम्न शर्तहरू पुरा गरेको हुनुपर्छ:

१. आफ्नो परिवारको सदस्य (बाबु, आमा, श्रीमान, श्रीमती, छोरा, छोरी, दाजु, भाई, दिदी, बहिनी) कुवेतमा कार्यरत रहेको वा

२. सम्बन्धित आवेदकले कुवेतमा पहिले काम गरिसकेको

**१. पेश गर्नुपर्ने कागजातहरूः**

क) नेपालको स्थानीय निकाय (गाउँपालिका वा नगरपालिका) बाट जारी भई कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणीकरण गरिएको सक्कल नाता प्रमाणपत्र (परिवारको सदस्यको हकमा) वा कुवेतमा पहिले काम गरेको बेलाको भिसा/आवासीय अनुमतिको प्रतिलिपि वा Civil ID को प्रतिलिपि (कुवेतमा पहिले काम गरिसकेको आवेदकको हकमा)

ख) हाल कुवेत सरकारबाट जारी भएको सक्कल कामदार प्रवेशाज्ञा (Entry Visa) र सोको अंग्रेजी अनुवाद

ग) कुवेतको परराष्ट्र मन्त्रालय र Chamber of Commerce बाट प्रमाणित गरिएको कम्पनी र कामदारबीच गरिएको आधिकारिक करार सम्झौताको सक्कल प्रति। (कामदारको तलब लगायतका अन्य सुविधाहरू स्पष्ट रूपमा राजदूतावासको मापदण्ड पुरा गरेको हुनुपर्नेछ र करार सम्झौता अरबी तथा अंग्रेजी दुवै भाषामा तयार गरिएको र सम्बन्धित कामदार तथा कुवेती रोजगारदाता कम्पनीको Authorized Signatory ले हस्ताक्षर गरेको हुनुपर्नेछ।)

घ) सम्बन्धित कुवेती रोजगारदाता कम्पनीको बहालम्याद भएको License र सोको अंग्रेजी अनुवाद सम्बन्धित कुवेती रोजगारदाता कम्पनीको Authorized

Signatory तोकिएको प्रमाणपत्र तथा सोको अंग्रेजी अनुवाद, Authorized Signatory को Civil ID को प्रतिलिपि

ङ) सम्बन्धित आवेदकको नागरिकता प्रमाणपत्र तथा राहदानीको प्रतिलिपि

च) राजदूतावासलाई सम्बोधन गरी आफू काम गर्न मञ्जुर भएको व्यहोरा उल्लेख गरी हस्ताक्षरसहित कामदारले लेखेको पत्र

छ) कामदारलाई तेस्रो मुलुकमा नपठाइने, सुरक्षित Accommodation प्रदान गरिने, महिला कामदार भएमा महिलाको छुट्टै Accommodation को व्यवस्था गरिने तथा निःशुल्क हवाई टिकट र भिसा उपलब्ध गराउने भन्ने कुराहरू उल्लेख गरी कुवेती रोजगारदाता कम्पनीले राजदूतावासलाई सम्बोधन गरी लेखेको पत्र (Guarantee Letter)

ज) यदि कामदारलाई अनलाइन अन्तर्वार्ताद्वारा छनौट गरिएको भएमा सो सम्बन्धी इमेलको प्रिन्ट

**२. आवेदन दर्ता गर्ने समय**: बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबार)

**३. आवेदन प्रमाणीकरण शुल्क:** १५ कुवेती दिनार

राजदूतावासमा पेश गरिएका सबै कागजातहरू सम्बन्धित अधिकारीले जाँच गरी दुरुस्त भएमा दर्ता गराउनुपर्ने र भोलिपल्टसम्म स्वीकृत (Approval) गरिनेछ।

## ▪ नेपाली राहदानी (Machine Readable Passport) प्राप्ति सम्बन्धी प्रक्रिया

**१. मेशिन रिडेबल पासपोर्ट (MRP) को लागि आवेदन गर्दा संलग्न गर्नुपर्ने कागजातहरू:**

क. सक्कल नेपाली नागरिकता र सोको प्रतिलिपि - १ प्रति

ख. सक्कल नेपाली राहदानी र सोको प्रतिलिपि - १ प्रति

ग.सक्कल नेपाली नागरिकता पेश गर्न नसकेको अवस्थामा सम्बन्धित जिल्ला प्रशासन कार्यालयबाट नागरिकता लिएको विवरण खुलेको पत्र तथा सोको प्रतिलिपि – १ प्रति

घ.मेशिन रिडेबल पासपोर्ट (Machine Readable Passport) बाहकको हकमा सक्कल नेपाली नागरिकता नभएमा नागरिकताको प्रतिलिपि– १ प्रति

ङ.कुवेतमा राहदानी हराएको भए कुवेतको प्रहरीको प्रतिवेदन (Police Report) र सोको अंग्रेजी अनुवादको सक्कल प्रति तथा प्रतिलिपि - १/१ प्रति

च.राहदानीको पाना च्यातिएको वा कुनै कारणबाट बिग्रेको/क्षति पुगेर MRP को लागि आवेदन गर्दा त्यस्तो सक्कल राहदानी

२. **आवेदन गर्ने समयः** बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

३. **राहदानी शुल्कः**

(क) साधारण राहदानी शुल्क - १६ कुवेती दिनार

(ख) हराएको/पाना च्यातिएको वा कुनै कारणबाट बिग्रेको/क्षति पुगेको राहदानीको लागि शुल्क – ३२ कुवेती दिनार

(ग) १० बर्षभन्दा कम उमेरका बालबालिकाको राहदानी शुल्क – ८ कुवेती दिनार

(घ) १० बर्षभन्दा कम उमेरका बालबालिकाको हराएको/पाना च्यातिएको वा कुनै कारणबाट बिग्रेको/क्षति पुगेको राहदानीको लागि शुल्क– १६ कुवेती दिनार

४. **वितरणः** मेशिन रिडेबल पासपोर्ट (MRP) आवेदन गरेको मितिदेखि साधारणतया १ महिनाभित्र वितरण गरिनेछ। राहदानी विभागबाट राहदानी प्राप्त भएपछि आवेदकलाई फोनमार्फत् जानकारी गराइनेछ। राहदानी बुझ्न आउँदा अनिवार्य रूपमा पुरानो सक्कल राहदानी र राजस्व बुझाएको रसिदसहित आवेदक स्वयं उपस्थित हुनुपर्नेछ। राहदानी आइतबारदेखि बिहीबारसम्म बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म वितरण गरिनेछ।

*(द्रष्टब्यः आवेदकले आफ्नो राहदानी तयार भए/नभएको जानकारी यस राजदूतावासको वेवसाइटको Passport खण्डमा हेर्न सक्नु हुनेछ ।)*

## ▪ अधिकृत वारेसनामा प्रमाणीकरण सम्बन्धी आवश्यक प्रक्रिया

**१. अधिकृत वारेसनामा प्रमाणीकरणका लागि पेश गर्नुपर्ने कागजातहरूः**

क. नेपालको प्रचलित कानून अनुसार दर्ता भएको कानून व्यवसायीद्वारा निजको प्रमाण पत्र नम्वर, दुई जना साक्षीको नाम, ठेगाना र सहिछाप सहित नेपाली कागजमा रीतपूर्वक तयार गरिएको दुई प्रति सक्कल अधिकृत वारेसनामाको कागजात

ख. बिक्री वितरण वा नामसारी गर्न लागिएको घर जग्गा वा अन्य सम्पत्तिसंग सम्बन्धित कागजातको सक्कल र सो को प्रतिलिपि

ग. अधिकृत वारेसनामा दिनेको सक्कल नागरिकता र राहदानी तथा कुवेती Civil ID को प्रतिलिपि

घ. अधिकृत वारेसनामा लिनेको नागरिकताको सक्कल र सो को प्रतिलिपि

ङ. अधिकृत वारेसनामा दिने, लिनेको हालसालै खिचिएको दुई दुई प्रति फोटो

च. आवश्यकता अनुसार कन्सुलर सेवा विभाग, त्रिपुरेश्वर, काठमाण्डौंबाट प्रमाणिकरण गरिएको नाता प्रमाणित प्रमाणपत्र, मृत्य दर्ता, हकवाला आदिको सक्कल कागजात

**२. अधिकृत वारेसनामा प्रमाणीकरण समयः**

बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. शुल्कः** १० कुवेती दिनार

**४. अधिकृत वारेसनामा प्रमाणीकरण गर्न लाग्ने समयः** आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी आवेदन दिएको दिन र तोकिएको कागजात/प्रक्रिया नपुगेमा वा आधिकारिकता यकिन गर्नुपर्ने भएमा सो पूरा भएपश्चात अधिकृत वारेसनामा प्रमाणीकरण गरिनेछ।

**(द्रष्टब्यः अधिकृत वारेसनामा दिने व्यक्तिले नियोग प्रमुखको रोहवरमा वारेसनामा कागजातमा सहिछाप गर्नुपर्ने छ।)**

## ▪ यात्रा अनुमतिमत्र (Travel Document) प्राप्ति सम्बन्धी आवश्यक प्रक्रिया

**१. यात्रा अनुमतिपत्र (ट्राभल डकुमेन्ट) का लागि आवेदन गर्दा पेश गर्नुपर्ने कागजातहरू:**

क) सक्कल नागरिकताको प्रमाणपत्र वा राहदानी(एम.आर.पी.) को प्रतिलिपि

ख) कुवेती प्रहरी कार्यालय वा गृह मन्त्रालयबाट जारी भएको कम्प्युटराइज राहदानी विवरण (उल्लिखित कार्यालयहरूमा सम्बन्धित नेपाली नागरिकले फिंगर प्रिन्ट दिएपछि छापिने कागजात)

ग) नेपालको सम्बन्धित जिल्ला प्रशासन कार्यालय वा स्थानिय निकायबाट जारी गरिएको नेपाली नागरिक भएको ब्यहोराको पत्र

**२. आवेदन गर्ने समय:** बिहान ९ बजेदेखि दिउँसो १ बजेसम्म (आइतबारदेखि बिहीबारसम्म)

**३. यात्रा अनुमतिपत्र (ट्राभल डकुमेन्ट) शुल्क:** निःशुल्क

**४. यात्रा अनुमतिपत्र (ट्राभल डकुमेन्ट) को लागि लाग्ने समय:** १ कार्य दिन वा आवश्यकता अनुसार आवश्यक सबै कागजात र प्रक्रिया पूरा गरी आवेदन दिएको १ कार्य दिन (२४ घण्टा) वा आवश्यकता अनुसार र तोकिएको कागजात/प्रक्रिया नपुगेमा सो पूरा भएपश्चात मात्र यात्रा अनुमतिपत्र (ट्राभल डकुमेन्ट)जारी गरिनेछ। साथै, विविध कारणले राहदानी नभएका नेपाली नागरिकहरूलाई नेपाल फर्काउने प्रयोजनार्थ उनीहरू रहेको कुवेती जेल, शेल्टर, अस्पताल, प्रहरी कार्यालय र केन्द्रीय अनुसन्धान विभाग (Central Investigation Department-CID) र देशफिर्ति केन्द्र (Deportation Centre) मा समेत नियोगको पदाधिकारीद्वारा भ्रमण गरी यात्रा अनुमतिपत्र (ट्राभल डकुमेन्ट) जारी गरिनेछ।

# अपराध तथा सजाय

देहाय बमोजिमका उपराध गरेमा कुवेतमा मृत्यू दण्डको सजाय, जेल सजाय एवं नेपाल फर्कन नपाउने गरी यात्रामा प्रतिवन्ध हुने हुँदा त्यस्ता कुनै पनि अपराधमा संलग्न नहुन कुवेतस्थित नेपालीहरूलाई अनुरोध छः

## कुवेतमा मृत्युदण्ड सजाय दिइने अपराधहरू

- सुनियोजित, योजनावद्ध र मार्ने नियतले गरिएको हत्या
- झुट्टो साक्षीका कारण भएको मृत्यु
- सामान लुट्न जहाजमाथि गरिएको आक्रमण
- यातायात वा संचार प्रणालीमा गरिएको आक्रमणबाट भएको मृत्यु
- मार्ने, भय सृजना गर्ने वा (सरकारी भवन, सम्पत्ति, धार्मिक स्थल, आवास, जनभेला आदिमा) क्षति पुर्याउन गरिएको विष्फोटक पदार्थको प्रयोग
- बलपूर्वक, डर देखाई वा जालझेल गरी गरिएको बलात्कार वा नातेदार, अभिभावकले गरेको बलात्कार (घरेलु महिला कामदारमाथि भएको जवरजस्ती बलात्कार समेत)
- मार्न वा करणी गर्न वा वेश्यावृत्तिका लागि गरिएको अपहरण
- लागूऔषधीको करोबार
- राज्यद्रोह (कुवेतविरूद्ध आक्रमण, राज्यको सुरक्षासँग सम्बन्धित संवेदनशील सूचनाको चुहावट वा अमिर/उच्च पदाधिकारीमाथि आक्रमण)
- यौनिक हमला वा वेश्यावृत्तिका लागि हुने मावन बेचबिखत
- युद्धको समयमा शत्रु राष्ट्रको सेनामा भर्ती भएमा

### कुवेतमा जेल सजाय हुने अपराधहरू

- लागू पदार्थको सेवन तथा कारोबार
- मादक पदार्थको सेवन तथा करोबार
- यातायात वा संचार प्रणालीमा गरिएको आक्रमण
- बलात्कार
- बिना बलपूर्वक मार्ने, करणी गर्ने वा वेश्यावृतिमा लगाउने नियतले गरिएको अपहरण
- राज्यको सुरक्षा सम्बन्धि महत्वपूर्ण कागजात नष्ट गरेमा
- कुवेत राज्य विरूद्ध अन्य राष्ट्रसँग सम्बन्ध राखेमा
- अश्लिल भिडियोको निर्माण

### कुवेतबाट नेपाल फर्कन नपाउने गरी यात्रामा प्रतिबन्ध हुने अपराधहरू

सबै अपराधिक (Criminal Law) र नागरिक कानुन (Civil Law) को उल्लंघन सम्बन्धि कार्यहरू (जस्तै चोरी, हत्या, बलात्कार, डकैती, सार्वजनिक सम्पत्तिको क्षति, आर्थिक विवाद, विना अनुमति गरिने काम, भिसा अवधिको समाप्ति, Runaway Case आदी)

## नेपाली कामदारहरूले आफ्ना समस्या समाधानको लागि राजदूतावासको सहयोग लिन गर्नुपर्ने कार्यहरू एवम् राजदूतावासले त्यस सम्बन्धमा गर्ने कार्यहरू:

### कामदारले गर्नुपर्ने कार्यहरू

- राजदूतावासको Hotline नं. 98869121 मा वा 25321603, 25321604, 25321605 मा फोन गरी समस्या अवगत गराउने
- राजदूतावास आएर लिखित रूपमा उजुरी दर्ता गर्ने
- उजुरी/समस्या सम्बन्धी कागजात, प्रमाण ईत्यादि पेश गर्ने

- घरेलु कामदार समस्यामा परेमा तत्काल राजदूतावास आउने, त्यसरी आउन नसकेमा फोनबाट समस्या/उजुरी पेश गर्ने र आपतकालीन (Emergency) को स्थितिमा कुवेत प्रहरीको फोन नं. ११२ मा फोन गरेर उद्दार गर्न आग्रह गर्ने
- राजदूतावासले समस्या समाधानको सिलसिलामा माग गरेको सूचना एवम् जानकारी उपलब्ध गराउने, राजदूतावासले तोकेको समयमा उपस्थित हुने
- राजदूतावासको राय परामर्श अनुरुप कार्य गर्ने
- आफ्नो Sponsor को घर वा कम्पनी बाट भागेर अरु Sponsor को घर वा कम्पनीमा काम नगर्ने। भागेर अरुसँग नबस्ने।

## राजदूतावासबाट गरिने कार्यहरू:

- राजदूतावासबाट सम्बन्धित Sponsor वा कम्पनीसँग कुराकानी/छलफल/पत्राचार गरी समस्या समाधानको लागि आवश्यक कार्य गरिने
- कामदारलाई कानुनी सहायता आवश्यक परे कानून व्यवसायीको सेवा लिनको लागि सहजीकरण (Facilitation) गरिदिने
- समस्या समाधानको लागि नेपालका सम्बन्धित निकायलाई पत्राचार गर्ने।
- समस्या समाधान भए/नभएको सम्बन्धमा सम्बन्धित् पक्षसँग आवश्यक अनुगमन (Follow Up) गर्ने।

## कुवेतमा कार्यरत नेपालीहरूले स्वास्थ्य सम्बन्धमा ध्यान दिनुपर्ने कुराहरू

- गर्मी मौसममा दिउँसो सकभर ननिस्कने
- आफ्नो आवासको तापक्रम धेरै चिसो नबनाउने
- ध्रुमपान, मध्यपान र लागू औषधि सेवन नगर्ने
- सकेसम्म आफ्नो खानामा फलफूल, हरियो तरकारी समावेश गर्ने
- चिया, कफी, प्रशोधित् जुस तथा पेय पदार्थ सेवन नगर्ने
- समयमा र पर्याप्त मात्रामा सुत्ने

- विशेष गरेर गर्मीको समयमा प्रशस्त मात्रामा पानी सेवन गर्ने
- गर्मीको समयमा बाहिर काम गरेर फर्किनासाथ फ्रिजमा राखेका अति चिसो पानी, जुस तथा खानेकुरा नखाने र तत्कालै ननुहाउने
- खाना खाने बित्तिकै नसुत्ने
- मोबाईल चार्जर, पावर बैंक जस्ता विदुतीय उपकरणहरू लामो समयमा चार्जमा राखेर नछोड्ने
- बिरामी परेमा तत्काल अस्पतालमा गएर उपचार गर्ने (अवैध रूपमा बसेका व्यक्तिलाई उपचार गर्न नमिल्ने भएकाले अवैध अवस्थामा नरहने)
- नियमित रूपमा पर्याप्त मात्रामा व्यायाम (Exercise) गरिरहेने।

## केही महत्वपूर्ण टेलिफोन नम्बरहरू

**ईमरजेन्सी फोन नं.**

- प्रहरी, एम्बुलेन्स र दमकल - ११२
- कुवेत अन्तर्राष्ट्रिय विमानस्थल - १६१
- श्रमसम्बन्धी सोधपुछ तथा गुनासोको लागि सामाजिक मामिला तथा श्रम मन्त्रालयको हटलाईन नं. - १२८

**अस्पताल:**

- अमिरी अस्पताल: २२४५०००५
- अलराजी अस्पताल: २४८४६०००
- अलसबाह अस्पताल: २४८१२०००
- आदान अस्पताल: २३९४०६२०
- चेस्ट (छातीसम्बन्धी) अस्पताल: २४८४९४००
- फरवानिया अस्पताल: २४८९२०१०
- मुबारक अल कबीर अस्पताल: २५३१२७००
- म्याटर्निटी (प्रसुति) अस्पताल: २४८४३१००
- साईकोथेरापी अस्पताल: २४८७४३३०

## सन्दर्भ स्रोतहरू:


१. कुवेतको श्रम कानून

२. कुवेतको अध्यागमन कानून

३. राजदूतावासबाट प्रथम पटक मिति २०७२/११/०५ मा प्रकाशित कुवेतमा रहँदा नेपाली नागरिकहरुले गर्नुपर्ने कार्यहरु (Dos) तथा गर्न नहुने कार्यहरु (Don'ts)

४. www.visit-kuwait.com

५. अन्य ईन्टरनेट स्रोतहरू

**नेपाली राजदूतावास, कुवेत**
Embassy of Nepal, State of Kuwait
Al Jabriya Area, Block No.-8,
Street No. 13, Building No. 514

Tel No.: (00965) 25321603, 25321604, 25321605
Hotline No.: 00965-98869121
Fax No.: (00965)25321601, 25321628
Email: eonkuwait@mofa.gov.np
Website: kw.nepalembassy.gov.np

**आफूले पढेर अरुलाई पनि पढ्न लगाउनुहोला ।।।**
**आफूले बुझेर अरुलाई पनि बुझाउनुहोला ।।।**

